# केही सार्वजनिक (अपराध र सजाय) ऐन, २०२७

लालमोहर र प्रकाशन मिति

२०२७।६।१८

संशोधन गर्ने ऐन

| | | |
|---|---|---|
| १. | केही सार्वजनिक (अपराध र सजाय) (पहिलो संशोधन) ऐन, २०३१ | २०३१।६।२० |
| २. | केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ | २०३९।८।६ |
| ३. | न्याय प्रशासन ऐन, २०४८ | २०४८।२।१६ |
| ४. | केही सार्वजनिक (अपराध र सजाय) (दोस्रो संशोधन) ऐन, २०४९ | २०४९।७।१७ |

२०२७ सालको ऐन नं. १२

## केही सार्वजनिक अपराध नियन्त्रण गर्ने र तत्सम्बन्धी सजायको व्यवस्था गर्न बनेको ऐन

**प्रस्तावना** : नेपालका विभिन्न क्षेत्रहरुमा शान्ति र व्यवस्था कायम राख्न र सर्वसाधारण जनताको सुविधा, सदाचार र नैतिकता कायम राख्नको लागि केही सार्वजनिक अपराध नियन्त्रण गर्न र तत्सम्बन्धी सजायको व्यवस्था गर्न वाञ्छनीय भएकोले,

श्री ५ महाराजाधिराज महेन्द्र वीर विक्रम शाहदेवबाट राष्ट्रिय पञ्चायतको सल्लाह र सम्मतिले यो ऐन बनाइबक्सेकोछ ।

१. **संक्षिप्त नाम, विस्तार र प्रारम्भ** : (१) यस ऐनको नाम "केही सार्वजनिक (अपराध र सजाय) ऐन, २०२७" रहेको छ ।

(२) यो ऐन नेपालभर लागू हुनेछ ।

(३) यो ऐन तुरुन्त प्रारम्भ हुनेछ ।

२. **केही सार्वजनिक अपराध गर्न नहुने** : कुनै व्यक्तिले देहायको कुनै काम गर्न हुँदैनः-

(क) कुटपिट वा हुल हुज्जत गरी वा अरु कुनै किसिमबाट कुनै राष्ट्र सेवकलाई आफ्नो ओहदाको कर्तव्य पालन गर्नमा बाधा पुऱ्याउने,

(ख) सार्वजनिक स्थानमा कुटपिट वा हुल हुज्जत गरी शान्ति भङ्ग गर्ने,

(ग) सार्वजनिक स्थानमा अश्लील बोली, बचन, इशारा प्रयोग गरी शान्ति भङ्ग गर्ने वा अश्लील प्रदर्शन गर्ने,

❖(ग१) सार्वजनिक स्वास्थ्य वा स्वास्थ्य विज्ञानको लागि बाहेक अश्लील भाषा वा अश्लील भाव आउने शब्द वा चित्रद्वारा अश्लील कुरा छाप्ने वा प्रकाशित गर्ने वा त्यस्तो अश्लील प्रकाशनहरु सार्वजनिक स्थानमा प्रदर्शन वा बिक्री वितरण गर्ने ।

(घ) हुलाक, सञ्चार, यातायात, विद्युत र अरु यस्तै आवश्यक सामाजिक सेवाको नियमित सञ्चालनमा अनुचित बाधा पुऱ्याउने,

(ङ) सरकारी वा गैर-सरकारी कार्यालयमा वा कसैको घर जग्गाभित्र हुल हुज्जत गरी अनधिकृत प्रवेश गर्ने वा अनधिकृत रुपमा रहने,

◈(च) हुल हुज्जत गरी वा ढुङ्गा मुढा गरी वा अन्य कुनै प्रक्रियाद्वारा सार्वजनिक वा निजी सम्पत्तिमा क्षती पुऱ्याउने,

(छ) सार्वजनिक स्थानमा महिला वर्गलाई हातपात गरी बेइज्जत गर्ने,

➔(ज) सार्वजनिक स्थानमा जथाभावी व्यवहार गर्ने,

➔(झ) कसैलाई हैरानी गर्ने वा सताउने हेतुले कही बसिरहेको अवस्थामा वा बाटोघाटोमा हिंडिरहेको वा कुनै सवारीबाट गइरहेको अवस्थामा कुनै प्रकारले बाधा विरोध वा छेकथुन (घेराउ) गर्ने वा हुल हुज्जत, हातपात, कुटपिट, विजाई वा उपद्रयाई गर्ने वा त्यस्तो व्यक्तिको साथमा भएको कुनै सम्पत्ति खोसी लिने वा नोक्सान गर्ने वा सवारीको साधनमा नोक्सान पुऱ्याउने,

➔(ञ) कसैलाई डर, त्रास वा दुःख दिने, अपमान वा वेइज्जत गर्ने वा हैरानी गर्ने हेतुले टेलिफोन, चिठ्ठीपत्र वा अन्य कुनै साधन वा माध्यमद्वारा धम्की वा गाली दिने वा जिस्क्याउने वा अन्य कुनै अनुचित काम कुरा गर्ने,

✚(ट) जुनसुकै सभा वा जुलुसमा घुसी वा नघुसी कसैले शान्ति भङ्ग हुने गरी जनसाधारणमा त्रास, आतङ्क फैलने कुनै कुरा गर्नु वा हतियारको प्रदर्शन गर्नु ।

---

❖ केही नेपाल ऐन (संशोधन) ऐन, २०३९ द्वारा थप ।
◈ दोस्रो संशोधनद्वारा संशोधित ।
➔ पहिलो संशोधनद्वारा थप ।
✚ दोस्रो संशोधनद्वारा थप ।

३. **पक्राउ गर्ने अधिकार** : (१) कुनै व्यक्तिले दफा २ अन्तर्गतको कसूर गर्दा घटनास्थलमा फेला परेमा निजलाई प्रहरी कर्मचारीले बिना वारेण्ट पक्राउ गर्न सक्नेछ ।

(२) कुनै व्यक्तिले दफा २ अन्तर्गतको कसूर गरेकोछ भन्ने कुराको कसैको युक्तियुक्त उजूरी परी विश्वास पर्दो सूचना प्राप्त भई वा युक्तियुक्त शङ्का भई सो आधारमा जाँचबुझ गर्दा कसूर गरेको भन्ने विश्वास लागेमा स्थानीय प्रहरी चौकी वा थानाको नायव प्रहरी निरीक्षक (सब-इन्स्पेक्टर) सम्मको मुख्य प्रहरी अधिकृतले अभियुक्तलाई पक्राउ गर्न वारेण्ट जारी गर्न सक्नेछ ।

तर, पक्राउ गरिएको व्यक्तिलाई बाटोको म्याद बाहेक २४ घण्टाभित्र मुद्दा हेर्ने अधिकारीका समक्ष उपस्थित गराउनु पर्छ र त्यस्तो व्यक्तिलाई त्यस्तो मुद्दा हेर्ने अधिकारीको आदेशले बाहेक सो अवधि भन्दा बढी थुनामा राख्नु हुँदैन ।

■४. **मुद्दा दायर गर्ने हदम्याद** : (१) यस ऐन अन्तर्गतको मुद्दा वारदात भएको सात दिन भित्र दायर गरी सक्नु पर्छ ।

(२) उपदफा (१) मा जुनसुकै कुरा लेखिएको भएतापनि अन्यायमा पर्ने कुनै व्यक्तिले यस ऐन अन्तर्गतको मुद्दाको कारवाई चलाउन चाहेमा बाटाका म्याद बाहेक वारदात भएको ७ दिनभित्र प्रहरीमा उजूर गर्नु पर्छ । त्यस्तोमा उजूर परेको मितिले उपदफा (१) बमोजिम म्याद प्रारम्भ हुनेछ ।

तर, वारदात भएको सात दिनभित्र मुद्दा दायर गर्न नसकिने मनासिव माफिकको कारण देखेमा मुद्दा हेर्ने अधिकारीले वारदात भएको पैंतीस दिनभित्र मुद्दा दायर गर्ने गरी म्याद थप गरी दिन सक्नेछ ।

■५. **मुद्दा हेर्ने अधिकारी र कार्यविधि** : (१) यस ऐन अन्तर्गतको मुद्दामा शुरु कारवाई र किनारा गर्ने अधिकार प्रमुख जिल्ला अधिकारीलाई हुनेछ ।

(२) यस ऐन अन्तर्गतको मुद्दामा प्रमुख जिल्ला अधिकारीले ↔विशेष अदालत ऐन, २०५९ बमोजिमको कार्यविधि अपनाउनेछ ।

(३) उपदफा (१) बमोजिम प्रमुख जिल्ला अधिकारीले गरेको निर्णय उपर ?पुनरावेदन अदालतमा पुनरावेदन लाग्नेछ ।

---

■ पहिलो संशोधनद्वारा संशोधित ।

↔ विशेष अदालत ऐन, २०५९ द्वारा रुपान्तरित ।

? न्याय प्रशासन ऐन, २०४८ द्वारा संशोधित ।

■६. **दण्ड सजाय** : ◈(१) यस ऐन बमोजिम कारवाही भएको मुद्दामा प्रमुख जिल्ला अधिकारीले कसूरको मात्रा अनुसार दश हजार रुपैयाँसम्म जरिवाना गर्न र पिडित पक्षलाई कसूरदारबाट बिगो बमोजिम क्षतिपूर्ति भराई दिन सक्नेछ तथा अनुसन्धानको सिलसिलामा मनासिव कारण देखिएमा थुन्नु पर्ने कारण खोली पर्चा खडा गरी बढीमा पैंतीस दिनसम्म थुनामा राख्ने आदेश दिन सक्नेछ । यस्तो मुद्दा तीन महीना भित्र फैसला गरिसक्नु पर्नेछ ।

तर जरिवानाको सजायले मात्र पर्याप्त नभई कैदको सजाय समेत गर्न पर्ने देखिएमा बढीमा दुई वर्षसम्म कैद गर्नको लागि पुनरावेदन सुन्ने अदालतमा साधक जाहेर गर्नेछ । त्यस्तो मुद्दामा पुनरावेदन सुन्ने अदालतबाट निर्णयमा तोके बमोजिम हुनेछ ।

(२) मुद्दा हेर्ने अधिकारीले पहिलो पटकको कसूर भए कसूर हेरी उप-दफा (१) बमोजिम सजाय नगरी कसूरदारलाई अब उप्रान्त यस्तो कसूर गर्ने छैन भन्ने कागज गराई छाड्न सक्नेछ ।

७. **नेपाल सरकार वादी हुने** : यस ऐन अन्तर्गतका मुद्दा नेपाल सरकार वादी हुनेछ ।

८. **अन्य प्रचलित कानून बमोजिम मुद्दा चलाउन सकिने** : यस ऐन अन्तर्गत सजाय हुने कसूरमा अन्य प्रचलित नेपाल कानून बमोजिम कारवाही चलाउन सकिनेछ ।

तर यो ऐन अन्तर्गत सजाय हुने कुनै कसूरमा यो ऐन अन्तर्गत कारवाही र सजाय भै सकेपछि सोही कसूरमा ✂.... .... .... अन्य कानून अन्तर्गत कारवाही र सजाय गर्न सकिने छैन ।

---

■ पहिलो संशोधनद्वारा संशोधित ।
◈ दोस्रो संशोधनद्वारा संशोधित ।
✂ दोस्रो संशोधनद्वारा झिकिएको ।

**द्रष्टव्य** : केही नेपाल कानून संशोधन गर्ने ऐन, २०६३ बमोजिम रूपान्तर भएका शब्दहरू:-

"श्री ५ को सरकार" भन्ने शब्दको सट्टा "नेपाल सरकार" ।